# जग्गाको जाँच सम्बन्धी रूक्का वि.सं. १८४८

स्वस्ति श्री मन्महाराजाधिराजकस्य रूक्का. आगे रामदास पंथ नारायण अर्ज्याल इच्छा नन्द बराकोटि दसरथ बानिया (मा) दल्या थापा रामचन्द्र बस्न्यात् रामचन्द्र राना प्रभृति सिंधु नालदुम पूर्व दूधकोसी पश्चिम महाभारतका डंडादेषि उत्तर लिस्ति र भोटको साँध देषि दषिन यति भित्रको जग्गा जिमि बष्सिल माफिक जाचन तिमिहरूलाई भारा लाञ्यू षातिज्मासित जाचका सवाल बमोजिम गयाका काज धर्मि बक्सौला-

(१) प्रजाका किपट राजाले दियाको तावापत्र र तारपत्र भोजपत्र मोहर जाँचनु जाँचदा पक्का ठहरिया सलामि ली थामि दिनु.

(२) औल मुरि २० के रूपैया ४ दोयम मुरि २६ के रूपैञा ३ सिम् मुरि २० के रूपैञा २ जसमा पत्र छैन सिक्रिया प्रजाके मिझाऱ्याके मुरी ४० बेठ वेगार डोको बोको गर्न्या कुर्न्या कुरियाके मुरी ३० थामि छुट्याई दिनु गाउको सेवा विर्ताको मोहर गराइ दिनु. मोहरको सलामी वीसको आठ आना दर्ले दर्सन भेट लिनु बढ्ता झिकि लिनू.

(३) औलिया प्रजाके मिझाऱ्यका मुरि ६० वेठ बेगार डोको वाको गर्न्या कुरियाके मुरि ४० थामि छुट्याइ दिनु गाउको सेवा विर्ताको मोहर

गराई दिनु मोहरको सलामी बीसको आठ आनाका दर्ले दर्सन भेट लिनु बढ्ता झिकी लिनु.

(४) हाम्रा मोहोर भयामाँहा काजका जोरले कच्चा पक्का नबुझी कट्टै भयाको भथा आज जाची बुझी गर्नु.

(५) नेपाल्या राजाले मयावि दियामा घडयारी वारी चहियो पाषा थामि दिनु बढ्ता पाषा र खेत झिकि लिनू

(६) मोहरिया छाप जोग्य अजोग्य पऱ्याको हेर्नू मोहोरमा नलेषियाको षेत झिकी लिनू

इति सम्बत् १८४८ मिति श्रावण सुदि २ रोज २ शुभम्

साभारः नेपालको वैधानिक परम्परा, डा. जगदीशचन्द्र रेग्मी

पाठ्यक्रम विकास केन्द्र,

त्रिभुवन विश्वविद्यालय